






# तिम्बुङ पोखरी

## ताप्लेजुङ/पाँचथर

संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व

अगाष्ट २००८



तयार गर्ने : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
तस्विर : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
सम्पादन : झमक बहादुर कार्की (राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग)
भवानी शंकर डंगोल (डब्लु डब्लु एफ नेपाल)




नेपाल सरकार
वन तथा भू-संरक्षण मन्त्रालय
**वन विभाग**

४-२२७५७४
४-२२०२०३
४-२२१२३१
४-२१६३७९
४-२२१७८४
फ्याक्स : ४-२२७३७४





(कृपया पत्रोत्तरमा प्राप्त पत्र संख्या र मिति उल्लेख गर्नुहोला ।।

बबरमहल,
काठमाडौं, नेपाल


प्राप्त पत्र संख्या र मिति :-
पत्र संख्या :-
च.नं. :-

## दुई शब्द

सिमसार स्वच्छ जलसम्पदाको लागि एक महत्वपूर्ण स्रोत हो । विभिन्न वन्य जन्तु तथा वनस्पति प्रजातिहरुको वासस्थान, पानी तथा विभिन्न स्रोतहरुको भण्डार भई पारिस्थितिक प्रणाली सन्तुलनको लागि पनि सिमसार अत्यन्तै महत्वपूर्ण हुन्छ । विशेष गरी स्थानीय वासिन्दा तथा समुदायहरुको लागि सिमसारहरु जीवनको एक अभिन्न अंगको रुपमा रहिआएका हुन्छन् । नेपालमा हजारौंको संख्यामा पोखरी, ताल-तलैया, कुण्ड आदि सबै किसिमका साना-ठूला सिमसारहरु छरिएर रहेका छन् । धार्मिक तथा सांस्कृतिक रुपमा यी सिमसारहरु अझ बढि महत्वपूर्ण रहिअएका छन् । यी सिमसारहरुको संरक्षण तथा सम्वर्द्धन गर्नु हामी सबैको दायित्व हो ।

डब्लु.डब्लु.एफ. नेपालले विगत केहि वर्ष देखि राष्ट्रिय निकुञ्ज तथा वन्य जन्तु संरक्षण विभाग संग समन्वय गरि संरक्षण क्षेत्र भित्र रहेका उच्च हिमाली क्षेत्रमा रहेका महत्वपूर्ण सिमसारहरुको विस्तृत अध्ययन गर्दै आएको. र यसैको सिलसिलामा संरक्षण क्षेत्र भन्दा बाहिर रहेका उच्च हिमाली सिमसारहरुको अध्ययन गर्ने क्रम अन्तर्गत यो अध्ययन शुरु भएको छ । यस पुस्तिकाको प्रकाशनले उच्च हिमाली सिमसारहरुको धार्मिक, सांस्कृतिक र परम्परागत महत्वको. बारेमा चेतना जगाउनुको साथै यी महत्वपूर्ण सिमसारहरुको संरक्षण कार्यमा बलियो टेवा पुग्ने र दिर्घकालिन व्यवस्थापनमा समेत सहयोग पुग्ने कुरामा विश्वस्त छु ।

यस किसिमका अध्ययन र अनुसन्धानका कार्यहरुलाई भविष्यमा पनि निरन्तरता दिंदै हिमाली क्षेत्रमा अवस्थित ओझेलमा परेका महत्वपूर्ण धार्मिक तथा सांस्कृतिक महत्वका सिमसार स्थलहरुलाई जनसमक्ष प्रस्तुत गर्दै लगिने छ ।

अन्त्यमा, यस अध्ययन कार्यमा संलग्न सबै अनुसन्धानकर्ताहरुलाई हार्दिक धन्यवाद दिन चाहन्छु ।

डा. केशवराज कणेल
महानिर्देशक
वन विभाग




नेपाल सरकार
वन तथा भू-संरक्षण मन्त्रालय
राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग
(.............................................. शाखा)

फोन नं.: ४२२०८५० / ४२२०९१२ / ४२२७९२६
फ्याक्स नं. ४२२७६७५





संकेत नं.:-
पत्र संख्या :-
चलानी नं. :-

पो. ब. नं. - ८६०
बबरमहल, काठमाडौं
Email: dnpwc@bdcin.wlink.com.np
http//:www.dnpwc.gov.np


## दुई शब्द

स्वच्छ पानीको श्रोतलाई संरक्षण गर्नु नेपाल सरकारको प्रमुख दायित्व अन्तर्गत पर्दछ । सिमसारको संरक्षणको लागि राष्ट्रिय सिमसार नीति, २०५९ लगायत सिमसारको जैविक बिविधता संरक्षण, पानीको उपयोग र पानीमा आश्रित जलचरको खेतीलाई व्यवस्थित गर्ने विभिन्न ऐन र नियमावलीहरु हाल कार्यान्वयनमा छन् । राष्ट्रिय सिमसार नीतिमा संरक्षण हिसाबले संरक्षित क्षेत्र वा वन क्षेत्र भित्र रहेका सिमसारहरुलाई सरकारद्वारा संरक्षण गर्ने भनी एकिन गरिएपनि सार्वजनिक स्थानमा रहेका सिमसारहरुलाई जनताद्वारानै संरक्षण गर्ने एकिन गरिएको छ ।

विश्वमा स्वच्छ पानीको हाहाकार भईरहेको अवस्थामा हिमाली भेगका पानीका श्रोतमा धनी नेपालले त्यहाँका ताल, कुण्ड र पोखरी आदिको सर्वेक्षण गरी ती श्रोतमा निर्भर जनता र जैविक विविधताको संरक्षण तथा ती श्रोतको शुद्धतामा निर्भर तल्लो नदीतटिय जनताको हित संरक्षणको लागि महत्वपूर्ण कार्य भइरहेको छ । यो सर्वेक्षण कार्यमा डब्लु डब्लु एफ नेपालले सहयोग गर्दै आएको तथा यस विभागले प्राविधिक समन्वय गर्दै आएको छ । यी सर्वेक्षण कार्यहरुबाट प्राप्त नतिजालाई आधार मानी नेपाल सरकारले गरेको अनुरोधलाई आत्मसात गर्दै रामसार सचिवालयले हिमाली क्षेत्रका रारा, फोक्सुण्डो, गोसाइकुण्ड र वरिपरिका तालहरु तथा गोक्यो र वरिपरीका तालहरुलाई अन्तराष्ट्रिय महत्वको सिमसारको सूचिमा समावेश गरी सकेको छ । यी संरक्षित क्षेत्र बाहिर अवस्थित तालहरुको संरक्षण र सदुपयोगको क्रमलाई यो कार्यले सघाउ पुऱ्याउने विश्वास लिएको छु ।

धार्मिक, सांस्कृतिक, ऐतिहासिक, चरिचरन, पर्यटन, जडीबुटी संकलन र सदुपयोग जस्ता दैनिक सरोकार र जीविकोपार्जनसंग सम्बन्धित विषयवस्तुका पुस्तिकाहरुको नेपालीमा प्रकाशनबाट स्थानीय स्तरमा संरक्षण र सदुपयोगमा सहयोग पुग्नुको साथै जैविक विविधता संरक्षणमा महत्वपूर्ण सहयोग पुग्ने मैले अपेक्षा राखेको छु ।

डा. अन्नपूर्ण नन्द दास
महानिर्देशक

## राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो। सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ। तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं। यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ।

स्वच्छ जल सम्पदा कायक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ। यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा वन विभाग, राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल

सिम-सार "तिम्बुङ पोखरी" कालीखोला, ताप्लेजुङ, "विष्णु पोखरी"
सत्य भावनाले पुजा तथा दर्शन गर्दा मनोकांक्षा पुरा हुने विश्वास रहेछ ! पाप, लोभ, ईष्या तथा हिंसा बोकेको मान्छे गए सर्वनाश हुने र क्षेत्रमा नै विपत्ती आउने किम्वदन्ती रहेछ ।"

तिम्बुङ पोखरी नेपाल राष्ट्रकै दोस्रो र विश्वको तेस्रो उच्च कञ्चनजंघा हिमाल (८,५८६ मीटर) को मुलघर ताप्लेजुङ्ग र पाँचथर जिल्लाको सिमानामा मेची अञ्चलमा पर्दछ । पुरानो किम्बदन्ती अनुसार परापुर्व कालमा ताप्ले नाम गरेको भोटे राजा उक्त क्षेत्रमा आफ्नो किल्ला 'जोङ्ग' बनाइ राज गर्दथ्यो रे । उस्कै नाम 'ताप्ले' र किल्ला 'जोङ्ग' बाट ताप्लेजुङ्ग नाम रहेको विश्वास पाँइदो रहेछ ।

नेपाल अधिराज्यलाई १४ अञ्चल ७५ जिल्लामा विभाजन गर्नु अगाडी अथवा विक्रम सम्बत् २०१८ साल पूर्व यो क्षेत्र धनकुटा गौडा अन्तरगत पर्दथ्यो । यसरी नेपाल अधिराज्यमा समावेश गरिनु अघि उक्त क्षेत्रको इतिहास किँरात प्रदेशसंग जोडिएको थियो भन्ने कुरा विज्ञहरु बताउँदछन् । तिब्बतको राजधानी ल्हासाबाट सबैभन्दा नजीक पर्ने नेपालको ताप्लेजुङ्ग जिल्ला ३,६४६ वर्ग किलोमीटर क्षेत्रफल अथवा अधिराज्यको तेस्रो ठूलो जिल्लाको रुपमा रहेको छ । विश्वमा नै सबैभन्दा सुन्दर कहलिएका सिंहलिला श्रृंखलाले यस जिल्लाको पूर्वी क्षेत्रलाई घेरेको अवस्था छ । यो अनुपम भौगोलिक संरचना प्राकृतिक गहना मध्ये एक हो । यस जिल्लामा ५० वटा गा.वि.स. रहेका छन् । विक्रम संम्बत २०५८ को जनगणना अनुसार ताप्लेजुङ्ग जिल्लामा कुल १,३४,६९८ जनसंख्या भएको आँकडा पाइन्छ । ताप्लेजुङ्ग जिल्लामा किँरात (नेपालको आदिवासी) लिम्बु जातीको बाहुल्य "बहुसंख्यक" रहेको पाइन्छ । जसमा लिम्बु ४०.८८ प्रतिशत, ब्राहमण १३.२ प्रतिशत, क्षेत्री ११.३६ प्रतिशत, शेर्पा ९.४ प्रतिशत, किँरात राई ४.६२ प्रतिशत, गुरुङ ४.२ प्रतिशत, तामाङ ३.७ प्रतिशत, दलित (विश्वकर्मा) ३.६ प्रतिशत, नेवार १.८६ प्रतिशत, दलित (दर्जी) १.६ प्रतिशत, किँरात मगर ०.८ प्रतिशत, सुनुवार ०.८ प्रतिशत, दलित (सार्की) ०.७ प्रतिशत र अन्य २.६ प्रतिशत भएको आकडा पाइन्छ । धेरै जस्तो क्षेत्र उच्च हिमाली भेग भएको ताप्लेजुङ्ग जिल्ला लगभग ४० प्रतिशत जंगलले ढाकेको छ ।

# सिमसार क्षेत्रहरु

सिमसार क्षेत्रको निमित्त ताप्लेजुङ्ग जिल्ला अति महत्वपूर्ण जिल्लामध्ये एक मानिन्छ । नदि, नाला तथा हिउँले मात्र ४२ प्रतिशत क्षेत्र ओगटेको आँकडा पाइन्छ । तमोर, मेवा खोला, पावा खोला, कावेली खोला, इवा खोला आदि ताप्लेजुङ्ग जिल्लाको मुख्य सीमसारसंग सम्बन्धित क्षेत्रहरु हुन् । त्यसैगरी चाबुक, लावाक, मालुक, छयाटुक, छिङलाङ्ग पिरामीड, कन्चनजङ्घा, रामदाङ र याम्तारी हिमनदीहरु उक्त ताप्लेजुङ्ग जिल्लाको हिमालयन सीमसार क्षेत्रहरु हुन् । नांगुमा पोखरी, नुप्पु, नुरा पोखरी, साम्दु पोखरी, काली टिन, लामा, चेउदी, जलजले, इवा, छहारे पोखरी तीन पोखरी, सेमा पोखरी, गहेचे पोखरी, सिनजेमा पोखरी (ताल, नुप्चुपोखरी, उच्च हिमाली ४,000 मि भन्दा माथि पर्ने हिम-पोखरीहरु ताप्लेजुङ्ग जिल्लाका सिमसार सम्पदा हुन् । हुनत जिल्ला भरि नाम उल्लेख नभएका अनगिन्ती त्यस्ता पोखरीहरु छरिएर रहेका छन् । ती पोखरीहरुको नामाकरण, उनीहरुमा आश्रित जैविक विविधता, वन्यजन्तु, संकटमा परेका प्रजातीहरुको वासस्थान वा पारिस्थितिकिय प्रणालीको गहिरो अनुसन्धान गर्नु आवश्यक छ । त्यसै गरी विभिन्न समुदायहरुको पौराणिक किंम्बदन्तीहरु, धार्मिक, मौलिक संस्कृति, परम्परा रिती-रिवाज र जैविक विविधता संरक्षण बारे अध्ययन अनुसन्धान गर्नु पर्ने आवश्यक देखिन्छ । जैविक विविधताको हिसाबले नेपाल विश्वकै महत्वपूर्ण क्षेत्रमा पर्ने राष्ट्र हो ।

स्वच्छ पानीको धुरी सधैं हाँसी रहने पवित्र हिमचुली कन्चनजंघा (८,५८६ मीटर अग्लो), खम्बाचेन (७,९०२ मीटर अग्लो) र सुति मात्र रहने कुम्भकर्ण हिमाल (७,७10 मीटर अग्लो) ताप्लेजुङ्ग जिल्ला तथा देशकै प्राकृतिक सम्पदा हुन् । यसरी भौगोलिक, जैविक, भाषिक, सांस्कृतिक, धार्मिक विविधताले पुर्ण ताप्लेजुङ्ग जिल्ला हिमालयन स्वच्छ पानीको लागि महत्वपुर्ण जिल्ला हुन सक्ने अथाहा सम्भावना देखिन्छ । मौलिक परम्परा सांस्कृतिक रितीरिवाज, चाल-चलन, रहन-सहन अनुसार मानिएका क्षेत्रहरु मध्ये फावा, खोधा, पाथीभरा, माना भरा, सिरीङ धाम, डिक्छोयोलिङ, सागाछयोलिङ, कालीङ, ऊरलिङ, सांवा, टाँसीछोलिङ आदि हुन् । सांवा गा.वि.स. मा पर्ने फुङफुङ्गे प्रसिद्व झरना उत्पत्ति कालदेखि नै फुङ-फुङ गर्दै झर्ने सुन्दर प्रकृतिका स्वच्छ पानीको स्रोत जिल्लाकै सिमसार हुन् । मेची अञ्चलकै सिर मानीएको कन्चनजङ्घा हिमालको काखमा हुर्किएको सिम-सार तिम्बुङ पोखरी काली खोला गा.वि.स. मा पर्ने धार्मिक जैविक तथा सांस्कृतिक महत्वका सिमसार क्षेत्र रहेछ । सिमसार सम्बन्धि जैविक सञ्चारको छाँयामा परेको तिम्बुङ पोखरी कन्चनजङ्घा संरक्षण क्षेत्रभन्दा वाहिर पर्ने पवित्र सिम-सार रहेछ । ताप्लेजुङ्ग जिल्लाको मानचित्रमा पोखरीको सांकेतिक चिन्हले मात्र जानकारीमा आउन नसकेको तिम्बुङ पोखरी समुदायहरुको भने आस्थाको प्रतिक रहेछ ।



## तिम्बुङ पोखरी, धार्मिक सांस्कृतिक तथा मौलिक परम्परा



ताप्लेजुङ्ग जिल्लाको कालीखोला गा.वि.स.मा पर्ने पवित्र तिम्बुङ पोखरी "हिमालयन सिमसार" संग आदिमकालदेखि व्यवहारमा भएका धार्मिक तथा मौलिक परम्परा बारे अध्ययन अनुसन्धान गरिएको थियो । स्थानीय स्कुलको शिक्षक बुद्धीजिवी बढापाकाहरुलाइ हार्दिक अनुरोधका साथ सहभागीता गराइएको थियो । उक्त सहभागीतामूलक कार्यक्रममा तिम्बुङ पोखरी सिमसारसंग सम्बन्धित धार्मिक परम्परा आदिमा केन्द्रित रहि छलफल गरिएको थियो ।



## तिम्बुङ पोखरी परिशरमा भएका सिमसार क्षेत्रहरु



समुहिक छलफल साथै स्थानीयस्तरमा गरिएको स्थलगत अध्ययन भ्रमण अनुसार कालीखोला गा.वि.स. सीमसार क्षेत्रको दृष्टिकोणले धनी मानिएको रहेछ । गोरेटोमा प्राकृतिक रुपमा झरेको छवाङ्ग छवाङ्ग आवाज निकाल्दै हावामा सुसाइरहेको झरना सिमसार वरिपरि रहेको हुन्छ भनी सहभागीहरुले बताउनु भयो । छलफलमा सहभागीहरुले तयार पार्नु भएको स्रोत नक्सा (चित्र) अनुसार चित्रण गरिएका सिमसार क्षेत्रहरु जस्तैः काली खोला जो तिम्बुङ पोखरीद्धारा उत्पत्ति भई वग्ने गर्दछ साथै याङमा खोला, तावा खोला, इवाखोला, कावेली खोलाहरु पनि पर्दछन् । तिम्बुङ पोखरीको पूर्वी क्षेत्रमा अवस्थित पहाडे जुम्ल्याहा, पश्चिम दिशामा भएको हाडी पोखरी लगायत खोपी पोखरी, छारे पोखरी, नयाँ पोखरी, कान्छीपोखरी, दुध पोखरी, नीर पोखरी, ममुर पोखरी, लक्ष्मी पोखरी, फुस्रे पोखरी, हाँस पोखरी, तावा पोखरी आदि हिमालयन सिमसार तिम्बुङ पोखरीका छिमेकीहरु रहेछन् ।









## तिम्बुङ पोखरी, विश्वास, धर्म, सांस्कृतिक परम्परा

जैविक, धार्मिक तथा सांस्कृतिक महत्वका तिम्बुङ पोखरी विश्वको तेस्रो अग्लो हिमाल कन्चनजंङ्गाको काखमा सुतिरहेको अवस्थामा देखिन्छ । तिम्बुङ पोखरीलाई 'विष्णुपोखरी' पनि भन्दारहेछन् । भगवान विष्णुको प्रतिक (अवतार) मानीएको तिम्बुङ पोखरीबाट म र मेरा श्रीमान (नारायण दिल) धार्मिक तिर्थ जाँदा उक्त पोखरीबाट पानी बोकेर ल्याई माई पोखरीमा हालेका छौं भनी माई पोखरीको निर्मल माइले भन्नु भएको थियो ।

तिम्बुङ पोखरीलाई पहिला विष्णुको रुपमा पनि मान्ने गर्दथिए । ताप्लेजुङ्ग जिल्लाको उच्च हिमाली क्षेत्रमा पर्ने गा. वि. स. मध्ये भौगोलिक तथा प्राकृतिक सुन्दरता भएको कालीखोला गा.वि.स. मा यो 'तिम्बुङ' पोखरी पर्दोरहेछ । उक्त गा. वि. स. मा गरिएको सहभागीता मूलक अध्ययन अनुसार तिम्बुङ पोखरी किँरात (नेपालको आदिवासी) लिम्बु भाषामा नामाकरण गरिएको रहेछ । किँरात लिम्बु जातीहरुको पुर्खाहरु भेडा गोठ सार्दै मौसम अनुसार हिमाली क्षेत्रमा जाने क्रममा यस पोखरी वरिपरि पुग्दा बन्दुक पड्के झै ड्वाङ्ग ड्वाङ्ग आवाज सुने पछि उनीहरुले तिम्बुङ भनी पुजा सम्मान गर्न थालेछन् रे । किँरात लिम्बु भाषामा 'तिम्बुक' भन्नाले बन्दुक र बुङ्ग भन्नाले पड्कने 'बुङ्ग' वा ड्वाङ अर्थ लाग्ने रहेछ । आजभोली पनि समय-समयमा बन्दुक पड्के झैं आवाज निस्कने गर्दछ भनी उक्त काली खोला गा. वि. स. का स्थानीय बासीहरुले बताए । त्यसै गरी तिम्बुङ पोखरीलाई तिम्बु पोखरी भनी भाकल गर्ने, पुजा गरी धार्मिक अनुसरण गर्ने परम्परा रहेछ । किँरात लिम्बु भाषामा तिम्बु भन्नाले "पोखरीमा टिल-पिल हुने गरी पानी हुनु वा भरिनु" हो । उक्त पोखरी भरी पानी जमिएको साल (वर्ष) गाउँ-घरमा अन्न-पातको उब्जनी राम्रो हुने स्थानीय बासीहरु गहिरो विश्वास राख्दा रहेछन् । प्रत्येक वर्ष उनीहरु पोखरीमा गई पानीको तह हेरी खेती, वाली, पशु, भाउ आदिको उत्पादन के-कस्तो रहने भन्ने भविष्यवाणी गर्ने परम्परा र धार्मिक विश्वास रहेछ । पोखरीमा दर्शन गरी फर्केर धार्मिक तिर्थालुहरुसंग पोखरीमा पानीको तह (अवस्था) के-कस्तो रहेको जानकारी लिने चलन परा-पुर्वकालदेखिकै रहेछ । पोखरीको पानीको सतह घटबड भएको खवर पाएमा लौ अव हाम्रो गाउँमा आउने साल खेतीबाली (कृषिजन्य) को उब्जनी राम्रो नहुने भयो भन्ने विश्वास राख्दोरहेछ । त्यसैगरी भेडापालन, चौरीपालन गर्नेहरु वर्षेनी मनसुन महिनामा तिम्बुङ पोखरी वरिपरि पुग्ने प्रचलन भएको पाइयो । प्रायजसो सबै गोठमा बस्ने मानिसहरुले उत्सुकताका साथ पोखरीमा पानीको अवस्थाबारे अवलोकन संगै भविष्यबाणीबारे माजमा विचार, विमर्श गर्ने परम्परा भएका कुरा सहभागीहरुले बताए ।

त्यसरी तिम्बुङ पोखरीको पानी कम भएको खवर पाएपछि गाउँलेहरु पुजा-आजा गर्न जाने, मन मनै अनुसरण सधैं गर्ने, कोहि नराम्रो भावना भएको मान्छे पुगेकी, कुनै गल्ती अथवा फोहर हुन गयो कि भन्दै विहान-बेलुका मन-मनै सम्झने गर्दछन् । घरमा नै तिम्बुङ पोखरीलाई पुकार गरेर भए पनि पुजा गर्ने पहिला देखि कै धार्मिक परम्परा भएको कुरा समाजका पुरानो पुस्ताका सहभागीहरुले सुनाउनु भयो ।



**“सच्चा मन लिएर गई तिम्बुङ पोखरीको पुजा अथवा दर्शन गरे तिम्बुङ पोखरीले चिताएको मनोकांक्षा पुरा गरिदिने । डाह, लोभ, लालच, मनमा पापी भावना भएको मानिस गएमा उसको सर्वनाश हुने र यस क्षेत्रमा नै अनिष्ट आउने जन विश्वास छ भनी ७४ वर्षकी रनमाया वेगाले भन्नुभयो ।” झण्डै चारकोरी बिताइसक्नु भएका रनमाया वेगा (लिम्बु) आफ्नो विगतका कुरा सम्झदै यसो भन्नुहुन्छ “अव त म पुग्न सक्दिन, हिमालको बाटोमा लेक लाग्छ । पहिला उमेर छँदा त वर्षेनी (हरेक वर्ष) तिम्बुङ पोखरी गइन्थ्यो । गाउँदेखि सबै प्रायजसो साउनको पन्ध्रमा तिम्बुङ पोखरी जाने पुरानो हाम्रो चलन नै हो ।”**

**“तिम्बुङ पोखरी छेत-छेती (साकक्षत) भगवान हुनुहुन्छ । हामी यहाँ सधै उहाँको सम्झना प्रार्थना गरिरहन्छौ । आफु अथवा घर-परिवार जन कोहि विरामी भएमा सत्यमनले तिम्बुङ पोखरीलाई पुजा गर्ने गर्दछौं । त्यसो गर्दा सञ्चो हुने, विरामी शरिर शीतल हुने हुन्छ । घरमा केहिको अभाव भएमा पनि हामी तिम्बुङ पोखरीलाई सम्झी हात जोडी विन्ती-भाउ गर्दै भगवान के गर्ने होला भन्दै पुकार गर्ने पुरानै चलन हो । त्यसो गर्दा आज सम्म त पुगेकै छ ।”**

-रनमाया वेगा (लिम्बु) ले भन्नुभयो ।



काली खोला-४ निवासी ८२ वर्षिय मोहन सिंह वेगा (लिम्बु) आफ्नो बाजेकै पालादेखि यस ठाउँमा बसोवास रहेको कुरा बताउनु हुन्छ । स्थानिय स्तरमा गई तिम्बुङ पोखरीको धर्म, संस्कार, परम्परा र संरक्षणको महत्वबारे सहभागीता मूलक अध्ययन कार्यमा समाजसेवी मोहन सिंह वेगा (लिम्बु) ज्यूलाई अनुरोध गरिएको थियो । समाजका अगुवा एवम् बुढापाका (बुढ्यौली) हरु उत्सुकताका साथ स्थानीय स्तरमा रहेका प्राकृतिक स्रोतहरुको रेखाङ्कन गर्ने कार्यमा छलफल गर्दै सहभागी हुनु भएको थियो । त्यसैगरी

तिम्बुङ पोखरीसम्म जाने धार्मिक तथा सांस्कृतिक गोरेटोको चित्रण गर्ने कार्यमा दिलचस्पीका साथ चारकोरी नाघि सक्नु भएका दम्पति मोहन सिंह र रनमाया वेगा (लिम्बु) सहभागी हुनु भएको थियो । काँसको बटुको (पेला) मा रक्सी (आइरक) पिउनु हुँदै तिम्बुङ पोखरीको उत्पत्ति, धार्मिक विश्वास तथा परम्परा बारे उहाँले भन्नुभयो-



**"मैले पनि बाजेबाट सुनेको कुरा हो, हाम्रा बाजेले भन्नुभए अनुसार आजभन्दा धेरै वर्ष पहिला एकजना साधु (महात्मा) आजभोली तिम्बुङ पोखरी भएको क्षेत्रतिर तिर्थ जाने विचारले अन्य सहयोगीहरु लिएर आएछ रे । निकै लामो हिमाली क्षेत्रको यात्रा गरेर आएका उक्त साधुलाई असाध्यै प्यास लागेछ । सबैजनाले वरिपरि पानीको खोजीमा लागेछ रे तर पनि कसैले पानी फेला पार्न सकेनछ रे । त्यसपछि साधुले आफ्नो त्रिशुलले सत्य भावनाले त्यहाँ रहेको पहाडलाई घोचेर पानी निकाली आत्मलाई धित मरुन्जेल पिएछ रे । त्यही त्रिशुलको घोचाइबाट निस्केको पानीद्धारा उक्त पोखरीको उत्पत्ति भएको भन्ने विश्वास पाइन्छ ।"**

**"आफुले पहिला पहिला धामी, झाँक्री, पेदाङ्गवा (लिम्बुजातीको पितृ धामी) हरु नाच्दै तिम्बुङ पोखरी गएको देखेको थिए । आफुले गाउँ-घरमा धामी विद्याले विरामीहरुको स्वास्थ्य राम्रो (निको) भइरहेको अझ वर वरदान माग्नको लागि उनीहरु तिम्बुङ पोखरी जाने परम्परा भएको कुरा उहाँले उक्त छलफलमा बताउनु भयो । तर आज भोली आफुले त्यसरी धामी, झाक्री फेदाङवाहरु नाच्दै तिम्बुङ पोखरी गएको भने देखेको छैन । खै किन होला भन्दै निज मोहन सिंह वेगा (लिम्बु) ले बताउनु भयो । बेला-बेलामा बन्दुक पड्के झै आवाज निस्कने तिम्बुङ पोखरी सत्य मनले मागेको कुरा पुरा हुने विश्वास छ । आफ्नो शरीरमा रोग, कुनै प्रकारको कष्ट, विरामी भए जाती हुने धारणा भएको कुरा उहाँले भन्नुभयो । नराम्रो विचार भएको मान्छे मेरो दर्शन गर्न आउदै छ भन्ने कुरा तिम्बुङ पोखरीले अघि नै चाल पाउने हुँदा त्यस्तो विचार भएको जो-कोहि तिम्बुङ पोखरी पुग्नु अगावै बाक्लो वादलले टम्म हुने गरी उक्त पोखरी छोपिने हुन्छ ।"**

पोखरी वरिपरि फोहर, मैला अथवा दिशा, पिसाव कसैले गरेमा मौसम विग्रेर आउने जस्तै पानी-झरी पर्ने, दर्शनमा गएका अथवा फोहर गर्ने स्वयम सिकिस्त विरामी हुने, वरिपरि रहेका पशुहरु विरामी पर्ने, मर्ने, उत्पादन राम्रो नहुने र वन्यजन्तुहरुले आक्रमण गर्ने जस्ता अनिष्ट घट्ना हुन सक्ने कुरा पनि वेगा ज्यूले बताउनु भयो ।

मोहन सिंह वेगाले पुरानो घट्ना भएको किंम्बदन्ती सम्भदै यसो भन्नुभयो-



**"तिम्बुङ पोखरीले विभिन्न समयमा आफ्नो रुप भिन्न तरिकाले दर्शन गर्न आउने यात्रुहरुलाई देखाउने गर्दछ । परापुर्वकालमा १२ जना विदेशीहरु तिम्बुङ पोखरी आईपुगेछ रे । उनीहरुले सुनको गोरु पोखरीमा देखेछन् रे । उक्त सुनको गोरु देखे पछि त ती यात्रुहरुलाई असाध्यै लोभ लागेछ र पोखरीको पानीलाई निकासबाट बगाएर पोखरी सुकाई सुनको गोरु आफुहरुले लैजाने सल्लाह गरेछन रे । आफुले गरेको निर्णय बमोजीम उनीहरुले पोखरीको एक छेउबाट पानी वग्ने निकास बनाएर पोखरी सुकाउन थालेछन् रे । निकास खन्ने क्रममा ती विदेशी पदयात्रीहरु सबै त्यही ठाउँमा परलोक भएछन् । यसरी मृत्यु भएकाहरुलाई उनीहरुले पोखरीको पानी सुकाउने मनसायले बनाएको निकास छेउमा चिहान बनाई पुरेछन् रे । ती व्यक्तिहरुको चिहान घर भनेर चिनीने ठाउँ अभ्र सम्म पनि देख्न पाइन्छ । त्यसरी उनीहरुले बनाएको निकासबाट पानी वगेर काली खोलाको उदय भएको भनाई हाम्रा बाजेले भन्ने गर्नुहुन्थ्यो । त्यो जमानामा बनाएका उक्त निकासबाट आजसम्म पनि तिम्बुङ पोखरीको पानी बगिरहेको छ ।"**

तिम्बुङ पोखरीमा धर्मको रुपमा चडाइएका भेटी पैसा र अन्य कुराहरु कसैले टिपेर लगेमा नराम्रो तथा अशुभ हुने विश्वास रहेको कुरा मोहन सिंह वेगाले बताउनु भयो ।

साक्षात भगवानको रुपमा चिनिएका तिम्बुङ पोखरीलाई विष्णु पोखरीको रुपमा पनि मान मनितो गर्ने परम्परा रहेको कुरा मोहन सिंह वेगा (लिम्बु) ले भन्नुभयो । आजभन्दा धेरै अघि सम्म जुम्लाहा हाँस तिम्बुङ पोखरीमा पौडी खेली रहेको देखेको थिएँ भन्नु हुन्छ निज वेगा । तिम्बुङ पोखरीको पुजा वा दर्शन गर्न जाँदा स्थानिय (निखुरा) गाईको दुध, सिन्के धुप, खाना, नुन, चिउरा केहि नखाई जाने परम्परा पहिला देखि नै समाजमा थियो भन्नुहुन्छ मोहन सिंह वेगा (लिम्बु) । यसरी ८२ वर्ष पुग्नु भएका समाज सेवी, बुद्धिजीवी मोहन सिंह वेगा ज्यूले आफ्नो पुर्ख्यौली दन्त्य कहानीको रुपमा बताउनु भएका तथ्यहरु भावी पिंढीहरुको निमित्त शिक्षा हुन सक्ने छ ।



पवित्र तिम्बुङ पोखरीलाई लिम्बु जातीहरुले तेम्बोक "बन्दुक पड्के भैं आवाज निस्कने" पोखरी भन्ने गरेको कुरा ५५ वर्षीय बल बहादुर कार्कीले बताउनु भयो । आफ्नो छर-छिमेकमा घटेका घट्ना सुनाउदै बल बहादुर कार्की भन्नु हुन्छ-

**"तिम्बुङ पोखरीले भैपरी आउने घट्ना आदि बारे छनक (संकेत) पोखरीमा दर्शन गर्न गएको बेला देखाउने गर्दछ । हाम्रै गाउँमा केहि वर्ष अघि घटेको घटना । उनीहरु तिम्बुङ पोखरीमा दर्शनको लागि पोखरीमा पुगेपछि बाक्लो भएर बादलले पोखरी छोपेका छोप्यै भईरह्यो रे । उनीहरु त्यसै पोखरीको पुजा-आजा गरेर फर्केछन् । घरमा फर्कर आएको एक वर्ष नबित्दै मरेको नानी जन्मिए । घरमा अशुभ हुने भए तिम्बुङ पोखरीको दर्शन गर्न गएको समयमा संकेत दिन्छन् ।"**

पोखरीमा पानी कम भएको साल गाउँघरमा अनिकाल परेकै हुन्छ । त्यो साल लगाएको अन्नबाली जे गरे पनि राम्ररी उब्जनी हुँदै हुन्न । तिम्बुङ पोखरीमा गएको समयमा टम्म पानी भएको साल समयमा वर्षा हुने लगाएको अन्न वाली राम्रो हुने, घरपालुवा गाई वस्तु, भेडा, वाखा, चौरी, कुखुरा, सुंगुर आदिको उत्पादन राम्रो हुने हुनाले गाउँका सबैले पोखरी गएको बेलामा पोखरीको पानीलाई ख्याल गर्ने परम्परा रहेको कुरा बल बहादुर कार्कीले उहाँसंगको छलफलमा बताउनु भयो ।

तिम्बुङ पोखरीमा जुम्ल्याहा (जोडी) पानी हाँस पौडी खेली रहेको आफैले धेरै पहिला देखेको भन्नु हुन्छ ५५ वर्षिय बल बहादुर कार्की । हाम्रा पालामा त बुबाहरु भन्ने गर्नुहुन्थ्यो कि-

**"तिम्बुङ पोखरी वरिपरि शिकार खेल्नु हुन्न । कसैले वन्यजन्तुहरुको शिकार गऱ्यो भने चितुवा आएर घरपालुवा गाई, भैसीका बाछा/बाछी, पाडा/पाडी, भेडा, बाख्रा मारी दिने जस्ता घट्ना हुन सक्छ ।"**

विश्वास गर्ने परम्पराले होला समाजमा कसैले पनि शिकार गर्ने गर्दैन थिए । तर आज भोली त त्यस्तो कथनहरु समाजबाट हराइसक्यो भन्दै बल बहादुर आफ्नो जीवनमा भईआएको घट्ना यसरी सुनाउनु हुन्छ ।

**"आज भन्दा धेरै वर्ष अघि मेरै घर नजीकैको जंगलमा हाव्रे आएको रहेछ । आफुले त राम्ररी नदेखेको । घाँस काट्न भनी गएको त एक दुई हात माथिल्लो पट्टि रुखको कापमा लुकेर बसिरहेको जनावर मनसाप्रोको बच्चा पो रहेछ भनेर सानो काठको छेस्कोले हानेको त ङयार ... आवज निकालेर म भए तिर उफ्रेर आयो । म त तर्से डर पनि लाग्यो तर त्यो जनावर त उफ्रेर तल तिर सिमसार क्षेत्रमा पल्टिएर गयो । म पनि त्यतै गएर हिर्काएर मारिदिएँ । मारे पछि त त्यसको छालाबाट टोपी बनाउन पाए त राम्रो होला भनी गोठको छानामाथि पल्टाएर छाडी घाँस काट्न गएँ । भरे घाँस काटी आउदा त छिमेकी आएर भन्यो यो जन्तु त मारेछौ अघि नै यस्को छाला काडेर राख्नु भएको भए ३-४ पाथी नुन त आउने थियो भने । उसले पो यो त हाव्रे "रेडपान्डा" हो यसको विक्री हुन्छ भने । त्यसपछि कुनै-कुनै समयमा त्यस्तो जनावर रुखमा हिडेको देखें । हाम्रो जंगल त तिम्बुङ पोखरी देखि तल भएको जंगलसंग जोडिएको छ । त्यहाँ हिउँ परेको समयमा त ठण्डी भएको कारणले त्यस्ता वनको जन्तुहरु तल हाम्रा गाउँ-घर वरिपरिको जंगल खोला-खोल्सी सम्म आई पुग्ने गर्दछन् ।"**

निज बल बहादुर कार्कीले उक्त कथनले उक्त क्षेत्रमा हाव्रे (रेडपान्डा) पहिला देखि नै स्थानिय जंगलमा पाइने रहेछ, मौसम परिवर्तन संगै वन्यजन्तुहरुले ठाउँ परिवर्तन गर्ने जस्ता ज्ञान गाउलेहरुलाई हुने कुराको शिक्षा पाइन्छ । त्यस्ता अन्य वन्यजन्तुहरुको वासस्थान, संख्या, उनीहरुलाई भईरहेको संकेत आदि विषयमा खोज अध्ययन गर्नु पर्ने आवश्यक देखिन्छ ।



५० वर्षीय लक्ष्मान वेगा तिम्बुङ पोखरी परिसरमा धान नाच नाच्न जाने परम्परा थियो तर आजभोली त्यस्तो चलन समाजबाट हरायो भन्नु हुन्छ । आफुले प्रत्यक्षरुपमा भोगेको हो भन्दै उहाँ आफ्नो हातको चाल देखाउँदै यसो भन्नुहुन्छ-

**"हाम्रा बाबु बाजेको पालामा त भेडी गोठ खोलाको किनार, अर्काको खेतबारी हुँदै तिम्बुङ पोखरी वरिपरि सम्म लैजाने गोठाले जीवन थियो । ईलाम जिल्लाका मावु गा.वि.स. मा बसोबास गर्ने गुरुङ्गहरु तिम्बुङ पोखरीमा उनीहरुको भेडाको बथान लिएर आउने गर्दथ्यो । यस गाउँका लिम्बु, लिम्बुनीहरु पनि आ-आफ्नो भेडा, गोठ सगै घरबाट रक्सी पारी तिम्बुङ मेलामा लिएर जाने र धान नाच नाच्ने परम्परा थियो । उक्त धान नाचमा तिम्बुङ पोखरीलाई पुकार गरी गीत गाइन्थ्यो ।"**

धेरै दिनसम्म नाचिने उक्त धान नाच र तिम्बुङ पोखरीको धार्मिक परम्परागत सम्बन्ध रहेको हुनसक्ने कुरा बताउनु हुन्छ लक्ष्मान वेगा ।

साउन महिनामा नाचीने उक्त "तिम्बुङ पोखरी धान नाच" मनाउन गाउँका लिम्बु महिलाहरु हरियो मकैको चिउरा तयार गरी साथमा रक्सी बोकी वर-पिपलको पुजा गर्दै तिम्बुङ पोखरी जाने परम्परा थियो । आफ्नै चौरी, भेडा गोठ र उता गुरुङ्गहरुको भेडा गोठ तिम्बुङ पोखरी नजीक आईपुगेको हुन्थ्यो । यताबाट धान नाच नाच्न भनी गएकाहरु सर्वप्रथम (पहिला) कान्छी धारामा नुहाई तिम्बुङ पोखरीको दर्शन गरेपछि फर्केर 'वर' चौर (सम्म परेको क्षेत्र) मा आई १०-१५ दिनसम्म धान नाच नाच्ने परम्परा थियो । यो पर्व नाग पञ्चमी देखी मनाइने हुँदा त्यसपछि, त्यस क्षेत्रमा ठण्डी बढ्ने भएकोले भेडी गोठालेहरु पनि सर्ने समय हुन्थ्यो । धान नाच नाच्न गएकाहरु पनि त्यस ठाउँ वरिपरि पाईने विखुमा जस्ता औषधिहरु बोकेर अर्को साल फेरी तिम्बुङ पोखरीमा धान नाच नाच्न भेट हुने बाचाका साथ फर्कने चलन थियो । एक आपसमा चिनजान (परिचय) सुचना आदान-प्रदान गर्ने, शुभकामना बाड्ने, वर्ष दिनको दुःख, कष्ट विर्सने तिम्बुङ पोखरी धान नाच धार्मिक परम्परा अव समाजबाट हराई सकेको कुरा लक्ष्मान वेगाले बताउनु भयो । पूर्व तिरबाट त्यसरी गुरुङ्गहरु पनि भेडा लिएर आउन छाडेको कुरा उहाँ बताउनु हुन्छ । गाउँ-घरबाट मकैको चिउरा र रक्सी तयार गरी तिम्बुङ पोखरी धान नाच नाच्न जान्ने मानिसहरु पनि जान छाडेको बताउनु हुन्छ । उक्त तिम्बुङ पोखरी धान नाचमा गाइने लयात्मक गीत समाजका बुढापाकाले भन्न सके मात्र नत्र त आजभोलीका युवाहरुले गाउन नसक्ने कुरा उहाँले छलफल कार्यमा बताउनु भयो ।

पूर्व अथवा ईलाम माबु गा.वि.स. वासी गुरुङ्गहरु कोही वँसाई सरेर तराई गएको कारण भेडापालन गर्ने परम्परा परिर्वतन भएको हुन सक्छ । आफ्नो छोराहरु विदेश अथवा गोर्खा सैनिकमा जानु साथै शिक्षाको विस्तार भएकोले गुरुङ्गहरुको पुर्ख्यौली परम्परा समाजबाट पलायन भएको हुन सक्ने लक्ष्मान वेगा बताउनु हुन्छ । त्यसैगरी हाम्रो गाउँमा भएका तिम्बुङ पोखरीमा धान नाच नाच्न जान्ने र उक्त लयात्मक गीत गाउन सिपालु मान्छेहरुकोहि स्वर्गबास भइसके त कोहि बसाई सरेको कारणले हाल समाजमा त्यस्तो व्यक्तित्व भएको मानिस नभएको तथ्य उहाँले बताउनु भयो ।

पवित्र हिमसार तिम्बुङ पोखरीको धार्मीक दर्शन र समाजका मार्मिक परम्परा अनुन्याश्रीत सम्बन्ध हुँदोरहेछ । एक वर्ग हराउन गयो भने अर्को अपाङ्ग अथवा अपुरो रहने हुँदा संरक्षण गर्नुपर्ने नितान्त आवश्यक भएको देखिन्छ । त्यस्तो पवित्र स्थानमा गएर गाईने गीतको भाका, नाच्ने शैली र उनीहरुले परापूर्वकालदेखि तिम्बुङ पोखरी, पहाड, वर-पिपलसंग व्यवहारिक परम्पराको नै लोप भएको अवस्था छ । त्यस्ता भाका, संस्कृतिको अध्ययन अनुसन्धान गरी प्राकृतिक सम्पदाहरुको संरक्षण र बुद्धिमता पूर्णउपयोगिता शिक्षाको विकास गर्नु आजको आवश्यकता देखिन्छ ।

तिम्बुङ पोखरी आफ्नो बाजेकै पालादेखि त्यस्तै देखिएको भन्नु हुन्छ “लक्षुमान वेगा” ।

**“समय–समयमा पड्कने र कोहि बेला काँसको थाल बजे झैं तिम्बुङ पोखरीले आवाज दिने गर्दछ भनी मेरा बाजेले भन्ने गर्नु हुन्थ्यो ।”**

भनी छलफल कार्यक्रममा लक्षुमान वेगाले भन्नुभयो । बाजेले दन्त्यकहानीको रुपमा भनीदिनु भएको कुरा सम्झदै भन्नुहुन्छ

**“मेरो बाजेले के पनि भन्ने गर्नुहुन्थ्यो कि तिम्बुङ पोखरीमा त भगवान आएर बसेको छ । राम्रो चिताएर गएर प्रार्थना गऱ्यो भने कुनै बेला एउटी राम्री केटी (युवती) देखाई दिन्छ । कहिले काहि पोखरीको वीचमा राम्रो सुनौलो मन्दिर देखाई दिन्छ । त्यसरी देखाइएको समयमा त एक जोडी सर्प पनि हिंडीराखेको हुन्छ । कसैले त्यहाँ भएको उक्त सम्पत्तिहरु लैजाने मनसाय लियो भने सर्पले बेरेर मार्न सक्छ ।”**

त्यसैले आजसम्म पोखरीमा चढाएको भेटी (पैसा) र अन्य कुराहरु कसैले पनि लैजान्न भन्ने कुरा लक्षुमान वेगाले भन्नुभयो । विक्रम सम्बत २०२५ सालमा तिम्बुङ पोखरी वरिपरि जुरे चील देखेको कुरा पनि निज लक्षुमान वेगाले भन्नुभयो ।

हरेक मानिसको अन्तर-आत्मामा सजिएको प्राकृतिक तथा भौगोलिक सुन्दर हिमालयन तिम्बुङ पोखरी अन्तरराष्ट्रिय महत्वको सिमसार सुचीमा समावेश हुन संरक्षणको दृष्टिले आवश्यक देखिन्छ ।

पाँचथर, फलैचा निवासी वर्ष ५६ को ज्ञान प्रसाद वेगा (लिम्बु) ४,४८० मीटर भन्दा उचाई सम्म भेडी गोठ राख्दै लैजाने आफ्नो परापूर्वकालको पेशा नै हो भन्नुहुन्छ । मौसमको अनुकुलतालाई भेडाहरुले संकेत गरे अनुसार आफ्नो पुर्ख्यौली भेडी गोठाले जिन्दगी भेडाहरु संगै तिम्बुङ पोखरी पूर्वमा आइपुग्नु भएका निज ज्ञान प्रसाद वेगा । उच्च हिमाली क्षेत्र ढुंगाको छेउमा मालिङगोको चित्राले बनाएको घुम्ते भेडी गोठ बस्ने ज्ञान प्रसाद वेगा भन्नुहुन्छ



**"यसरी हिमाली क्षेत्रमा भेडा पालन व्यवसाय गरी बस्नु कठिन छ । आफ्नो जातीय भाषामा भेडालाई "मेलुक" भनी बोलाउने चलन हाम्रो पुर्खाकै पालादेखि भई आएको बताउनु हुन्छ । भगवानको पाला (समयकाल) मा ब्राहमण जातीहरु, भेडापालन गर्ने मनसाय लिई सात किसिमका रङले रङगाएको चामल र भेडा लिएर तिम्बुङ पोखरी आएछन् रे । तिम्बुङ पोखरी आएर खाना पकाउन नसकी काँचैचामल खाएर बस्नुपर्दा यस्तो जाडो (ठण्डी) ठाउँमा भेडा पालन गर्नु भन्दा तल भैसी पालन गर्नु नै राम्रो भनी आफ्नै ठाउँमा फर्केछन् रे । हेर्दा रमाइलो देखिने यो भेडा पालन तर गर्न असाध्यै कष्ट र अप्ठ्यारो भेल्नु पर्दछ ।"** भन्नुहुन्छ ज्ञान प्रसाद वेगा । हँसिलो मुहारले भेडाको दुधमा चिया पकाएर दिदै ज्ञान प्रसाद वेगा फेरी भन्नुहुन्छ –

**"पुर्खाहरुले कमाई गरिदिई राख्नु भएको भेडा पालन छाड्नु त भएन के गर्नु दुःख भए पनि पाल्नै पर्‍यो । वर्ष भरी यसरी नै हिमाली क्षेत्रमा लैजान्छौं । जाडो हुन थाले पछि अलि गर्मी हुने ठाउँ, गाउँ-घर, आफ्नै वारीमा लैजाने गर्छु । पहिला-पहिला त जाडो मौसममा तल खोंच अथवा गर्मी क्षेत्रहरुमा चराउदै, अर्काको खेतबारीमा हिउँदे बाली उठाई सकेपछि भेडी गोठ राख्न दिने चलन थियो । हजारौको संख्यामा भेडाहरुको बथान लैजाने र ल्याउने चलन थियो । भेडाको मल राम्रो हुने हुँदा त्यसबेला सबैले आ-आफ्नो खेत-वारीमा हामीलाई भेडी गोठ राख्न लगाउदथे । भेडी गोठ राखीसकेपछि त्यहाँ भएका गाउँ-घरमा सिलिङगे काठको टुंना बजाएर गीत गाउदै माग्न जाने चलन थियो । "सिलीङगे काठको घुर्मुखे टुंना ! स्वर दिन्छ सारङगे ! लेखाईमा फुल्ने लै-लाली गुँरास !!! आवलमा फुल्ने टोटोला को हो मा को हो नभन आमै, म भेडी गोठाला" भन्दै गाउँ-घरमा घुम्ने परम्परा थियो । गाउँ-घरका सबैले लौ भेडी गोठालो आएछ भनी चामल, दाल, सागसब्जी दिन्थ्यो । भेडाहरुलाई खाना पुगेसम्म उनीहरुको खेतबारीमा बसी अन्यत्र सार्ने प्रथा थियो ।"**

हिउँद महिना भरी कम जाडो हुने ठाउँमा भेडाहरु लैजाने र गर्मी शुरु हुन थाले पछि उसैगरी उभो (उभाउली) लेकतर्फ लिएर आउने गरिन्थ्यो । त्यस समयमा प्रायजसो गाउँलेहरुले हिउँदे बाली लगाउने गर्दैनथिए । आज भोली जस्तो विकासे मल पाइदैनथ्यो । हामीलाई खोला, खोल्सीमा भेडा चराउन खुल्ला थियो त आजभोली सामुदायिक वनको कारण हामी भेडा पालन गर्नेहरुलाई असुविधा भएको छ भन्नुहुन्छ ज्ञान प्रसाद वेगा । यसरी समयसंगै परिवर्तन हुँदै आएको विकासे कार्यक्रम र निती नियमले परापुर्व कालदेखि भई आएको आफ्नो पुर्ख्यौली जीवन शैली ओभेलमा परेको बताउनु हुन्छ ज्ञान प्रसाद वेगा । विक्रम सम्बत २०२०-२२ साल देखि त्यस्तो सिलीङगे काठको टुंना र गीत पनि भेडा पालन संगै हराएर गयो । मैले त आफ्नो पहिलाको कुरा भनेको मात्र हो । त्यस समयमा त राम्ररी बुट्टा भरेर बनाइने



त्यस्ता टुंना कस्को राम्रो बज्ने भनी होडबाजी चल्थ्यो । अब भेडी, गोठ उधो (उधाउली) लैजाने बेला भयो भन्दै भेडी गोठालोहरु आ-आफ्नो टुंना बजाउदै सुरिलो स्वरमा भाका-मिलाई गीत गाउने चलन थियो । अब त त्यो चलन पनि हराएर गयो भनी छलफलमा ज्ञान प्रसाद वेगाले बताउनु भयो ।

**"छाडा कुरा नबोल्नु तिर्थ जाने भए जाउँ" भनी पुर्खाहरुले तिम्बुङ पोखरी जाने आज्ञा दिनु हुन्थ्यो भन्दै ज्ञान प्रसाद भन्नुहुन्छ "हाम्रा पुर्खाहरुले तिम्बुङ पोखरीलाई तिम्बु भन्नाले "भरी" अर्थ लाग्छ । त्यस बेलामा पुर्खाहरुले पोखरीमा पानी भरी भएको देख्ने गरेको हुँदा उनीहरुले लिम्बुभाषाबाट तिम्बु पोखरी भनी बोलाउने चलन बसाएको रहेछ । सधै टम्म (भरी) हुने गरी पानी भई रहेको हुनाले गाउँघरमा प्रशस्त अन्नपात फल्ने र पशुपालन राम्रो हुने गर्दथ्यो ।" लिम्बु भाषामा पोखरीलाई "ओरेक" भनिन्छ भन्दै ज्ञान प्रसाद वेगा अगाडी भन्नुहुन्छ "यस धर्तीको उत्पत्ति भएदेखि नै यस तिम्बुङ पोखरीको जन्म भएको हुन सक्ने विश्वास भएको कुरा उहाँ बताउनु हुन्छ । तिम्बुङ पोखरी अति शक्तिशाली भएको कुरा ज्ञान प्रसाद वेगा यसरी भन्नुहुन्छ कि "तिम्बुङ पोखरीको विच भएर कुनै पंक्षीहरु उडेर जानै सक्तैन । जस्तो सुकै चरा (पंक्षी) ले उडेर गए वीचमा पुगेपछि पोखरीमा नै खस्ने गरेको कुरा धेरै पल्ट देखेको भन्नुहुन्छ ।"**

चोखो मुख (खानेकुरा नखाईकन) र सत्य भावनाले तिम्बु पोखरीको पुजा-आजा तथा दर्शन गर्न गएमा चिताएको कुरा पुरा हुने विश्वास छ । फुलपाती, धुप आदि साथमा लिएर तिम्बुङ पोखरी आई सच्चा विचारले विन्ती भाउ गरे धन, सम्पति, विद्या प्राप्त हुने विश्वास गर्ने परम्परा रहेको कुरा ज्ञान प्रसाद वेगाले उहाँसंगको छलफलमा बताउनु भयो । छोरा, छोरी अथवा सन्तान नहुने दम्पतिहरु तिम्बुङ पोखरी आई सन्तान माग्ने गर्दछन् । सन्तान भएपछि लिएर देखाउन आउने छौं भन्दै पुजा गरी फर्कने र नानी भएपछि तिम्बुङ पोखरी ल्याई देखाउने चलन गाउँ-घरमा रहेको कुरा उहाँले भन्नुभयो । आफ्नो घर परिवारमा मराउ (जुठो) पर्नै हुने रहेछ भने उक्त परिवारका सदस्यले तिम्बुङ पोखरीको दर्शन गरेमा पोखरीको पानी नै उम्ले झै गरी बादलले छोप्ने हुन्छ । प्रत्येक वर्ष यस ठाउँमा गोठ ल्याएपछि आफुले रातो, सेतो पहेलो तुल कपडा (धजा) लिएर तिम्बु पोखरीमा गई जोम्ले हात जोडी नुन नखाई सेवा गर्ने गर्दछु । आज सम्म मेरो भेडा पालन राम्रै छ । घर-परिवारहरु पनि सबैजना सञ्चै भएको कुरा उहाँ बताउनु हुन्छ ।

ज्ञान प्रसाद वेगा आफ्नो बाबु, बाजेले भन्नु भएको कुरा र पुरानो परम्परा सम्झदै भन्नुहुन्छ "म सानो छदाँ मेरो बाजेले भन्ने गर्नुहुन्थ्यो तिम्बु पोखरी वरिपरि भएको वोट विरुवा नाश हुने गरी टिप्ने गर्नुहुन्न नि । यदि त्यसो गरेमा उसको उठीबाँस हुने



हुन्छ । पोखरी वरिपरि शिकार गर्नु हुन्न, कसैले त्यसो गरेमा तिम्बुङ पोखरीले सराप दिने गर्नु हुन्छ र हाम्रो सत्यनाश हुन सक्छ भनी बताउनु हुन्थ्यो । केहि गरी आफुलाई चाहिने औषधि भएमा पोखरीसंग मागेर ल्याउने गर्नु पर्छ भन्नु हुन्थ्यो पुर्खाहरुले । आज भोली मलाई आवश्यक पर्ने यस्ता औषधि हुने वोटविरुवा आफुलाई चाहिने जति मात्र यसोभनी "आदेङवे सिदा तेरुङ्ग, आदेङ्गवे सेवारो । मेन्छामा सा होपाङ्ग ताक्से थाङ्गवा । यव विछा सा होपाङ्ग नाक्से थाङ्गवा सेवारो क्याराङ्ग जो यो सेवा मयाङ्ग नमसे ह्याक्याङ्ग के वेसाङ्ग सेवा चोक्छसे थाकतुङ्ग ।" तिम्बु पोखरीसंग मागी ल्याउने गर्दछु ।

मानव उत्पत्ति र उसको भावनात्मक सम्वन्ध गाँसिएको तिम्बुङ पोखरी धार्मिक सांस्कृतिक तथा परम्पराको महत्वपूर्ण क्षेत्रमध्ये एक रहेछ ।

## तामाङ जाती

**"भाकरालारी भुई गोठो (हिमाल डाडामा भैसी गोठ), सैलुण्ज्ञठण्गोङरी ज्यामुगंरी ध्यू गोठे (डाडैं-डांडा, भेडा, गोठ), तोरैच्यामा घिलिङ्गड (उभो हेर्दा हिउँको लामो डाडा), भारैच्यामा गान्धो सवाङ्ग (उधो हेर्दा लामो नदी) डाँफे नामे खुइलोङ्गी (डाँफे भाले, पोथी जोडी), मुनाल नामे खुइलोङ्गी (मुनाल भाले, पोथी जोडी) ताङसार वोगे चर्तीमा (झारल, घोरल चर्दा खेरी हिमालको देवता रमाउँछ), झयामु गंलालाजेलामो (हेर्दा कति सुहाउने पापी मनलाई रुवाउने), तामाङ जातीको गीत, तिम्बुङ पोखरी वरिपरि भएको हिमाल, डाँडाकाडा खोला, नाला, जनावर र पेशासंगको पुरानो गीत भनी इन्द्र बहादुर तामाङ (चित्र) ले बताउनु भयो । तामाङ भाषामा "बाती" भन्नाले पानी भएको क्षेत्र छिपछिपे भाग भनी बुझाउँदो रहेछ । त्यसैगरी "ताम्ब" को अर्थ पुर्ख्यौली रितीस्थीती लाग्दो रहेछ । तामाङ जातीहरु तिम्बुङ पोखरीलाई "ताम्बवती" यानी की आफ्नो पुर्ख्यौली परम्परा अनुसार मानिएको पोखरी विश्वास गर्दा रहेछन् ।"**

तिम्बुङ पोखरीमा आई "मैले चिताएको कुरा पुगोस ! मेरो आयु लामो होस ! भनी प्रार्थना (तामाङ भाषामा :- मलम) गर्ने परम्परा रहेको छ") भनी इन्द्र बहादुर तामाङले बताउनु भयो । गर्भ रहेको अथवा पर सरेको महिला तिम्बुङ पोखरीको पुजा वा दर्शन गर्न आउन नहुने समाजमा भनाई भएको कुरा इन्द्र बहादुर तामाङले बताउनु भयो । "गर्भ रहेको महिला तिम्बुङ पोखरीको दर्शनमा आए भने उनको गर्भ तुहिने (मर्ने) अथवा पछि नानी जन्मने समयमा असाध्यै पिडा हुने हुन्छ" भन्ने जन विश्वास रहेको कुरा उहाँले सुनाउनु भयो । पर सरेको समयमा महिलाहरु तिम्बुङ पोखरी आए भने उनीहरुको शरिरमा विराम पर्ने र पोखरी वपरपरि बाक्लो वादलले छोप्ने गर्दछ । त्यस्तो महिलाहरुले पुजा, दर्शन गरे पोखरी आफु फोहर भएको भनी बादलले छोपिने हुन्छ भन्ने विश्वास" तामाङ समाजमा रहेछ ।





कालीखोला-९ निवासी वर्ष ४९ को चन्द्र बहादुर भण्डारी तिम्बुङ पोखरीलाई "विष्णु पोखरी" भन्ने गरेको बताउनु हुन्छ । चन्द्र बहादुर भण्डारी तिम्बुङ पोखरीको दर्शन गर्न जादा सर्वप्रथम तिम्बुङ पोखरी नपुग्दै अथवा तिम्बुङ पोखरी जाने उकालो बाटैमा हिटी (पानीको कान्छी धारा) मा नुहाई, धुहाई गरी चोखो नितो भई विष्णु भगवान (पोखरी) को दर्शन गर्न आएको । उहाँको दर्शन पाउँ, हे भगवान भन्दै सफा लुगा लगाएर उक्त तिम्बुङ पोखरी तर्फ मनमा जप गर्दै जाने हाम्रो

परम्परा छ ।" भन्नुहुन्छ । मैला (फोहर) कपडा आदि भए वरै पाटीमा राख्ने गर्नुपर्छ भनेर हाम्रा बाबु, बाजेले भन्ने गर्नुहुन्थ्यो । उहाँहरुकै कुरा आजसम्म हामी पालना गरिरहेका छौं । "फलफुल, धुप, बत्ती (तेलको बत्ती), घण्टी, त्रिशुल आदि लिएर गई हे विष्णु पोखरी दर्शन पाउँ" भनी प्रार्थना गर्ने परम्परा भएको कुरा चन्द्र बहादुर भण्डारीले उहाँसंगको छलफलमा बताउनु भयो । यसैगरी अगरबत्ती, फूलपाती आदि बोकेर पोखरी नजीक गई "हे कैलाश महादेव, विष्णु पोखरी हामी तपाईको दर्शन गर्न आएको, हाम्रो शरिरमा सञ्चो होस् , नौग्रह शान्ती होस्, आयु लामो होस, हाम्रा जहान, परिवार सबैलाई सञ्चो सुविस्ता होस भन्दै धुप बत्ती गर्छौं" भन्नुहुन्छ निज चन्द्र बहादुर भण्डारी ।

पोखरीको पुजा गरी सकेपछि लौ अव विदा हुने बेला (समय) भयो "हामी अर्को साल यसैगरी चोखो नितो भएर आउन पाउँछौ होला भन्ने विश्वास राख्दछौं" हे भगवान विदा दिनु भनी नमस्कार गरी फर्कनु पर्ने कुरा चन्द्र बहादुर भण्डारीले बताउनु भयो ।

गाउँ-घरमा तिम्बुङ पोखरीको धार्मिक सांस्कृतिक तथा परम्पराबारे सहभागीतामूलक अनुसन्धात्मक र व्यक्तिगत छलफल कार्य पछि स्थलगत अध्ययन गर्न गइएको थियो । पैदल हिड्दै जाने क्रममा सुन्दर सलल बगिरहेको खोला, नाला, त्यसमा हालिएका झोलुङगे पुल, पाखापखेरा आदिको दृश्यले लागेको थकाई नै मेटिन्थ्यो । उकाली ओराली गर्दै सुन्दर प्राकृतिक तथा भौगोलिक क्षेत्र हरु पार हुदै अगाडी जाने काम भयो । विक्रम सम्बत २०६४ श्रावण महिनाको १३, १४, र १५ गते तिम्बुङ पोखरी महोत्सवको आयोजना पनि गरिएको थियो । प्राकृतिक मनोरमसंगै सजाइएका तुलहरुले आगन्तुकहरुलाई स्वागत गरिरहेको देखिन्थ्यो । कहि-कतै गाउँलेहरु मिलेर बाटो-घाटो सर-सफाई गरिरहेको भेटिन्थे ।









गाउँ-घर छिचोल्दै (पारगर्दै) उकालो लेकको बाटोमा थकाई मार्दै तिर्थालु साथै कार्यका सहभागीहरु । पवित्र तिम्बुङ पोखरी तर्फ जाने गोरेटोमा ढुंगा ठडाई फुलपाती, अगरबत्ती (सीन्केधुप) बाली, भेटी पैसा, धजा (पुजामा चलाउने कपडा) चडाई तिर्थालुहरुले पुजा गर्ने देव स्थान हरु पाइयो । उकालो ओरालो गोरेटोमा कुवा बनाई तिर्थालुहरुलाई पानी पिउनको लागि लोहटा पनि राखिदीने परम्परा रहेछ । विशेष गरी त्यस क्षेत्रमा भेडा तथा चौरी पालन गर्ने महानुभावहरु बस्ने गर्नु हुंदोरहेछ ।













तिम्बुङ पोखरी जाने गोरेटो वरिपरि पशु तथा चौरी पालनको लागि अनुकुल वातावरण रहेछ । बाटोमा भेटिएकाहरु चौरी गोठ अगेनामा मकै भुट्दै हुन्छ । लेक जानेहरुको लागि भुटेको मकै अथवा मकै भुटेर पिनीएको सातु अति आवश्यक हुन्छ भनी निज चौरी पालकले हामीलाई पनि भुटेको मकै खान दिनु भयो । लेकाली बास परेङ्ग वा निगालोबाट वेरा तथा छाइएका गोठ (छाप्रो) मा नै धेरै जिन्दगी बिताउनु हुने चौरी पालकहरु आफुलाई आवश्यक पर्ने खाद्यान्नहरु डेली मा सुरक्षित साथ राख्ने चलन रहेछ । चौरीको दुधबाट तयार पारिएको छुर्पी धुँवामा सुकाई निकासी गरिने उहाँहरुले बताउनु भयो ।



चौरीपालन गर्नु भएका महानुभावसंग विनम्रताका साथ विदा भई हामी तिम्बुङ पोखरी तर्फ पहाड चढ्दै गयौं । धेरै समयको यात्रा पछि हामी धरातलीय सम्म परेको क्षेत्रमा महोत्सवको लागि बनाइएको अस्थाई झुपडीहरु भेटिए । चौंरीहरु चरिरहेको भेटिन्थ्यो । “हाम्रा गौरवशाली तिम्बुङ पोखरी” भन्ने नारा लेखिएका तुलहरु विभिन्न ठाउँमा सजाइएका थिए । यसरी कठिनाईका साथ लामो पैदल यात्रा पछि हाम्रो यात्रा त्यही आएर रोकियो । उक्त क्षेत्रबाट २-२ १/२ घण्टा हिंडेपछि बल्ल तिम्बुङ पोखरी पुगिन्छ भन्दै समुहका एकजना साथीले बताउनु भयो ।





तिम्बुङ पोखरीको पुजा गर्नु अगाडी रहेको हिटीमा नुहाउनु पर्छ भन्ने धार्मिक मान्यता भए झै प्रा.वि. का प्रमुख तथा स्थलगत अध्ययन कार्यको सहयोगी नुहाउने तयारी गर्दै हुनुहुन्छ । पवित्र हिम श्रृंखलाबाट वगेर आएको ताजा पानी धार्मिक रुपले महत्व मानिएको स्थल कान्छी धारामा तिर्थालुहरु विशेष गरी अनुहार धुने चलन रहेछ । अनुहार, हात, पाउ, धुईसकेपछि अगरबत्ती, फुलपाती, धजा, अक्षता भेटी चढाई कान्छी धाराको पुजा सबै तिर्थालुहरुले गर्नुहुने रहेछ । परम्परागत भनाई, धार्मिक तथा सांस्कृतिक मान्यता अनुरुप नुहाई धुहाई गरी कान्छीधारामा पुजा गरी सकेपछि हाम्रो अध्ययन समुह तिम्बुङ पोखरी तिर जान तयार भयो । तिम्बुङ पोखरी धार्मिक तथा सांस्कृतिक महत्वको महोत्सवमा आउनुभएका भक्तजनहरुसंगै













हिड्दै जादा ४,४८० मीटर उचाईमा पुगियो । त्यसैको नजिकै उच्च पवित्र हिमालको काखमा लमपसार परेर तिम्बुङ पोखरी सुतिरहनु भएका रहेछ । लगभग ८० प्रतिशत पहाडले घेरिएको तिम्बुङ पोखरीको तिनवटा छेउमा मात्र भक्तजनहरुले पुजा (दर्शन) गर्न सक्ने रहेछ । मुख्यरुपले तीनवटा क्षेत्रबाट पोखरीमा पानी झरेको देखिन्छ । तिम्बुङ पोखरी आउनु भएका तिर्थालुहरुले निकासमा पानी भरेर घर लैजानुहुने चलन रहेको छ । मुख्य मन्दिरमा गई फूलपाती, भेटी धजा, धुप, दियोमा तेल थप्दै वा बत्ती बाली पोखरीको छेउमा गई पुजा गर्दै भक्तजनहरु निकास पुग्ने परम्परा रहेछन् । उक्त निकास क्षेत्रमा ठाडो पारिएको ढुंगाहरुमा फूलपाती, अक्षता, भेटी, बत्ती चढाई पुजा आजा गर्ने परम्परा रहेको पाइयो । निकासको छेउमा रहेको सानो ढिस्कनो (डिल) पनि तिर्थालुहरु गएर पुजा गर्ने धार्मिक तथा सांस्कृतिक चलन रहेछ ।

















हिमालयन तिम्बुङ पोखरी प्रवेशद्धार छेउमा सजाइएका सृष्टिदाता भगवान शिव रहेको छ । कैलाश अथवा हिमदेवता गोमन सर्पको माला धारण गरी बाघको छालामाथि आसन गर्नु हुने शिव भगवानको भेटी, अक्षता, फूलपाती चढाई पुजा गर्ने परम्परा रहेछ । त्यसरी तिम्बुङ पोखरीमा जाने बाटोको दाँया पर्ने ठाउँमा ढुंगाकै खम्बा र बलोमा झुण्डाएर राखिएको घण्टीहरु भेटिन्छन् । आफ्नो चाहना आफुले चिताएको कुरा पुरा भए पछि मानिसहरुले घण्टी, त्रिशुल आदि चढाउने प्रचलन रहेछ । पोखरीको मुख्य पुजा गर्ने क्षेत्रमा बनाएर राखिएका विभिन्न देव देवी देवताहरुलाई चढाएको त्रिशुल, ठडाएर राखिएको ढुंगा आदिमा भेटी, रङ, फुलपाती चढाई भक्तजनहरुले पुजा-आजा गर्ने चलन रहेछ । उठेको जस्तो ठाउँमा दियो जडित त्रिशुल, हसिया आदि चढाउने धार्मिक परम्परा रहेछ ।




कुनै ठाउँमा धजा ठडाई होम लगाउने ठाउँ बनाएर पुजा गर्ने धार्मिक तथा सांस्कृतिक परम्परा भएको पाईयो । कुनै शिलामा अक्षर कुँदेर त्यसको छेउ वा वरिपरि त्रिशुल चढाएको देवताहरु पनि छन् । दर्शन तथा पुजा गर्न आउनेहरुले दियोमा बत्ती बाल्ने, धजा, भेटी, रङ, फलफुल चढाउने गर्नुहुँदो रहेछ । कुनै ठाउँमा कोटी होम त्री-भगवान स्थापना गरी त्रिशुल गाडी छाडेको पाइन्छ ।




पोखरी छेउमा विभिन्न देव, देवता र बुद्ध धर्म सम्बन्धी छापिएका तुल कपडाहरु डोरीमा बाधेर वा लुङमा अल्झाएर हावामा फरफराइएको देखिन्छ । उक्त सांस्कृतिक परम्पराले बौद्ध धर्म गुरुलामाहरुले दमङ (बौद्ध जप) गर्दा तिम्बुङ पोखरीमा भएका देव, देवताहरुलाई सम्बोधन गर्दै तयार पारेको तुल धर्मको लागि पोखरी छेउमा ल्याएर राख्ने परम्परा छ भन्नुहुन्छ एक तिर्थालु । पुजा गर्न जान सकिने किनार वरिपरि त्रिशुल चढाइएको पाइन्छ । त्यसरी चढाएको त्रिशुल हेर्दा त सदियौ देखि तिम्बुङ पोखरीमा भक्तजनहरु आउने परम्परा हुन सक्ने अनुमान गर्न सकिन्छ । पोखरी नजिकै चेप्टो पाते ढुंगाको खम्बा झै ठडाएर ढुंगाकै बलो तेर्साइ देव, देवतालाई मान मनितो गर्ने धार्मिक परम्परा रहेछ । ढुंगा उक्त बलोमा प्वाल पारी अल्झाइएको घण्टी साथमा त्रिशुल र त्यसैको फेदमा पुजा गर्ने ठाउँ बनाइएको भेटिन्छ । धार्मिक तथा सांस्कृतिक परम्परासगै विकास भएको मानव कला र शीप हेर्न पाइन्छ । धार्मिक समुदायहरुले प्राकृतिक स्रोतसंग गरिइएको व्यवहार पर्यावरणीय अनुकुल तथ्य देखिन्छ ।











तिम्बुङ पोखरीको किनारमा नै बनाएको मन्दिर छ । उक्त मन्दिर वरिपरि त्यसरी ढुंगाको खम्बा माथि ढुंगाकै बलो हाली राखिएका देवताहरु देख्न पाइन्छ । तिर्थालुहरु पुजा गर्ने धार्मिक परम्परा अनुरुप पुजा गरिरहेको भेटी, अक्षता, नरिवल, फलफुल, धुप, बत्ती, रक्ष, धजा चढाउँदै गरेको दृश्य देख्न पाइन्छ । कोहि कोहिले घर-परिवारहरुलाई तिम्बुङ पोखरीसंग अर्शिवाद मागी दिनुहुने परम्परा रहेछन् । मन्दिर भित्र त्रिशुल नै त्रिशुलहरु चढाइएको देवताको घण्टी बजाएर पुजा गर्नु पर्ने परम्परा रहेछ । सेतो, रातो, पँहेलो धजा (पुजा गर्ने कपडा), धुप, पाती, फलफुल, नरिवल आदि चढाउने र केहि प्रसादको रुपमा आफैले लिएर जाने धार्मिक तथा सांस्कृतिक चलन रहेछ । चढाइएको धजालाई टुक्रा पारी आफन्तहरुलाई तिम्बुङ पोखरीको प्रसाद बाँड्नको लागि दर्शनार्थीहरुले लैजाने गर्नुहुदो रहेछ । दर्शनार्थीहरु पुजा गर्नमा नै व्यस्त हुनुहुन्थ्यो । "सत्य भावनाले तिम्बुङ पोखरीमा गई पुजा तथा दर्शन गरेमा आफ्नो मनोकांक्षा पुरा हुन्छ" लोभ, पाप, ईर्ष्यालु व्यक्ति गए सर्वनाश र क्षेत्रमा नै विपत्ती आइलाग्ने धार्मिक विश्वास लिएर आउनु भएका भक्तजनहरु पुजा गर्नमा तल्लीन देखिनु हुन्थ्यो ।

"तिम्बुङ पोखरी गई विद्या माग्ने, बुद्धिमाग्ने चलन छ " भन्ने कुरा सामुहिक छलफल कार्यक्रममा सहभागीहरुले बताउनु भएको थियो । प्रत्यक्ष स्थलगत अध्ययन गर्ने समयमा तिम्बुङ पोखरीको दर्शनार्थीले आफ्नो अभ्यास पुस्तिका मुख्य मन्दिरलाई चढाएको देखियो । त्यसरी चढाइएका अभ्यास पुस्तिकाहरु त चाङ-चाङ परेको उक्त मन्दिरमा देखिन्छन् । प्रत्येक वर्ष विद्यार्थीहरु आफ्नो पढाई राम्रो होस् भनि तिम्बुङ पोखरी आउने गर्दछन् भनि एक दशर्नाथीले वताउनु भयो । यसरी अभ्यास पुस्तिका तिम्बुङ पोखरीमा आई चढाएर धेरै जना सफल भएका तथ्य कुराहरु गाउँघरमा पाइन्छ भनि उहाँले बताउनु भयो । तिम्बुङ पोखरी आफ्नो उज्वल भविष्यको लागि एक चित्तले अध्ययन गरी विद्यामा हुन पाइयोस् भन्ने चाहना व्यक्त गर्ने धार्मिक स्थल रहेछ ।

"तिम्बुङ पोखरीमा गई चोखो, नितो मुखले वरको हिटीमा नुहाई तिम्बुङ पोखरीमा गई पुजा गरे नौ ग्रह शान्ती हुने" विश्वास अनुसार भक्तजनहरुले आ-आफ्नो घरबाट पातको दुना सिएर ल्याउने चलन रहेछ । तेलको बत्ती बाली, भेटी पैसा (धर्मको नाममा चढाइएको पैसा), फुल, अक्षता उक्त दुनामा राखी पोखरीको किनारमा आई पुजा गरी छाड्ने र आफुले चिताएको, गर्न खोजेको कुराहरु पुरा हुने विश्वास गर्नु हुने परम्परा रहेछ । त्यसै गरी आफ्नो, घर-परिवारमा भएका ग्रह दशा शान्त हुने भावनात्मक विश्वास लिनुहुने चलन रहेछ । आफुलाई परेको पिर, मर्का, शारिरीक कष्ट, नौ-ग्रहदशा शान्ती होस् ! आफ्नो परिवारका सदस्यहरुलाई आराम रहोस् ! हामीले लगाएको खेतीबाली राम्रो होस, पशुपालन राम्ररी सप्रियोस चिताएको वा गर्न लागेको कार्यहरु सफल होस ! आयु लामो होस्, धन-सम्पति, गर-गहना, विद्या, शिप आदि प्राप्त हुने विश्वास लिएर तिम्बुङ पोखरीमा आई बत्ती बालेर चढाई सत्य-साँचो चिताएर हे साक्षत भगवान मैले चिताएको कुरा










पुरा होस् भनी जोम्ले हातले नमस्कार गरी पुजा गरेमा तिम्बुङ पोखरीले पुरा गरिदिने विश्वास रहेछ । फेरी अर्को सालमा यसरी नै तिम्बुङ पोखरीको दर्शन गर्न पाउने विश्वास गर्दै तिम्बुङ पोखरीसंग विदा हुने धार्मिक परम्परा रहेछ । यसरी आफ्नो भावना तिम्बुङ पोखरीमा आई पोखेको दृष्टिगत अध्ययनले समाजका हरेक व्यक्तिको अन्तर आत्ममा तिम्बुङ पोखरी रहेको प्रष्ट हुन्छ । त्यस क्षेत्रकै मानव समाज र उनीहरुको विकास या हरेक कियाकलाप तिम्बुङ पोखरीसंग जोडिएको देखिन्छ । मानव समाज र तिम्बुङ पोखरी धार्मिक, सांस्कृतिक परम्परा एक अर्काको परिपुरक रहेको पाइयो ।



तिम्बुङ पोखरी धार्मिक, सांस्कृतिक परम्परा र समाजको लागि पवित्र स्थलको रुपमा रहेको हिमालयन सीमसार क्षेत्र हो ।











## जैविक विविधता :-

मानव विकासका लागि आवश्यक पर्ने हरेक अंशसंग प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा सम्बन्ध भएका तिम्बुङ पोखरी जैविक विविधताको निमित्त महत्वपूर्ण क्षेत्र रहेछ । समाजका ऐतिहासिक स्थल उच्च हिमाली चिसो पर्यावरणीय परिस्थिय प्रणालीमा पाईने वनस्पति विविधताको लागि तिम्बुङ पोखरी परिसर अत्यन्तै महत्व रहेछ । ६ महिना भन्दा बढि समयसम्म हिउँ रहि रहने तिम्बुङ क्षेत्र जैविक प्रजाती विविधताको निमित्त प्राकृतिक भण्डार नै भने पनि हुन्छ भनि महोत्सवका एक सहभागीले बताउनु भयो । साउनको १५ गते हिउँमा खेल्न पाए शुभ हुने विश्वास भएका ताप्लेजुङ्गे समाज प्रायजसो तिम्बुङ क्षेत्रमा हिउँ हेर्न आउनु हुँदो रहेछ । तिम्बुङ पोखरीको दर्शनलाई आउनु भएका भक्तजनले ल्याउनु भएका हिउँको डल्ला देखाउँदै समाजमा रहेको विश्वास बारे सुनाउनु भयो । हिउँ पछि त्यस क्षेत्रमा धेरै समयसम्म अधिक पानी परिरहने हुँदा हिमालयन जैविक विविधता का लागि प्राकृतिक घर भने हुने रहेछ । आफ्नै भेडाको ऊनबाट तयार पारिएको पाखी ओडेर अध्ययन अनुसन्धान कार्यमा सहभागी मित्रहरुका साथ ठाउँठाउँमा ढुंगाको ढिस्कोहरु देखाउँदै सहभागी ज्ञान प्रसाद वेगा भन्नुहुन्छ





यसरी ढुंगाले हामीलाई हाम्रा भेडाहरुको बथान पत्ता लगाउन सजिलो हुन्छ। उहाँ भन्नुहुन्छ-



**"अनेक प्रकारको औषधि मूलोमा प्रयोग हुने वोटविरुवा पाइन्छ । आफुले भेडाहरु विरामी भए तिम्बुङ पोखरीसंग भाकेर टिप्ने गरेको बताउनु हुन्छ । चरनमा लैजादाँ भेडाहरुले आफै पनि विभिन्न त्यस्ता औषधि युक्त वोटविरुवा खाने हुँदा यस क्षेत्रमा उत्पादन भएको कुराहरु जस्तै :- घिउ, दुध मानिसले प्रयोग गर्दा स्वास्थ्यलाभ हुने तथ्य उहाँले बताउनु भयो।"**



निज ज्ञान प्रसाद वेगाको भेडी गोठ पवित्र तिम्बुङ पोखरीको पूर्वी भेगमा रहेको हुँदा उहाँको व्यक्तिगत अध्ययन गर्न गइएको थियो। उहाँको भेडा गोठको नजिक ३-वटा पोखरी रहेछ। ती पोखरी देखाउन ज्ञानप्रसाद वेगा हाम्रो साथमा आउनु भएको थियो। ती ३-वटा पोखरी मध्ये विचमा पर्ने पोखरी चाहि सुकेको अवस्थामा रहेछ। हेर्दा ठूलो क्षेत्रसम्म फैलिएको हुन सक्ने पोखरी केहि वर्षसम्म पानी भएको कुरा उहाँले हामीलाई सुनाउनु भयो। यसरी वर्षौ देखि प्राकृतिक रुपमा भएको पोखरी सुकेपछि जैविक विविधता, वन्यजन्तु, पर्यावरण तथा परिस्थितिय प्रणालीमा के-कस्तो असर पर्‍यो भन्ने कुराको अध्ययन गर्नु पर्ने आवश्यकता देखिन्छ। यसरी हिमालयन सिमसार परिस्थितिकिय प्रणालीमा आईरहेको पर्यावरणीय परिवर्तन वा विनाशले जैविक प्रजातीहरुमा परेको प्रभावबारे गहिरो अनुसन्धान गर्नु पर्ने र संरक्षण रणनिति तय गर्नु पर्ने कुराको बोध भयो। माथिल्लो र तल्लो क्षेत्रमा भएको पोखरीलाई हाल जुम्लीय पोखरी भन्दा रहेछन्। तिम्लीय भन्दै आएको पोखरी मध्ये बीचको चाहि हराएपछि जुम्लीय पोखरी नाम रहेको कुरा ज्ञान प्रसाद वेगा बताउनु हुन्छ। यस पोखरी वरिपरि अति महत्वपूर्ण वनस्पति, वन्यजन्तु, पंक्षीहरु पाइने कुरा पनि ज्ञानप्रसाद वेगाले स्थलगत अध्ययन भ्रमणको क्रममा भन्नुभयो। यो क्षेत्रमा पाइने संकटापन्न अवस्थामा पुगेका प्रजातीहरुको विविधता, अवस्था, वासस्थान र दिगो संरक्षण गर्नु पर्ने रणनिती बारे वैज्ञानिक अध्ययन गर्नु पर्ने आवश्यकता देखिन्छ। त्यो क्षेत्र नेपाल र सिक्किमको सिमाना नजिकै पर्दछ। विश्वको संकाटान्न पारिस्थितिकिय प्रणालीमा पर्ने नेपालको पूर्विय उच्च हिमाली कन्चनजंङ्घा परिसरमा रहेको तिम्बुङ क्षेत्र वनस्पति प्रजाती विविधताको लागि महत्वूर्ण देखिन्छ। मौसम अनुसार प्राकृतिक रुपमा लह-लह भई फुल खेली रहेको वनस्पति प्रजातीहरु देखिन्छ भने फुलको थुंगाहरुमा हिमाली भमराहरु भ्रुमीरहेको देखिन्छ।













उच्च हिमालीयन सिमसार तिम्बुङ पोखरी पारीस्थिकिय प्रणालीमा पाइने महत्वपुर्ण वनस्पति प्रजाती मध्ये केन्जो फुल प्रमुख हुन् । समुद्र सतहदेखि ४,४८० मीटरको उचाईमा रहेको तिम्बुङ पोखरी सिमसार पारीस्थितीकीय प्रणालीमा काई, लेउ र होचां प्रजातीका वनस्पति पाइने क्षेत्रमा यो प्रजातीको वनस्पति पाउनु उक्त क्षेत्रको अनुपम स्वरुप भन्न सकिन्छ । वाटुलो आकारको पात हुने केन्जो फुल साउन-भदौ महिनामा फुल्ने गर्दछ । त्यस केन्जो फुलको फेदमा बस्दा आफु भन्दा अग्लो देखिन्छ । रेसिमोस इन्फलोरेन्स (Resemose, Infloremces) किसिमको फुल भएको केन्जो ढुंगे क्षेत्रमा उम्रने वनस्पति रहेछ । केन्जो औषधिको रुपमा प्रयोग हुने संकटापन्न पारीस्थिकिय प्रणालीमा पाइने संकटापन्न प्रजातीको वनस्पति भित्र पर्दो रहेछ । हालसम्म यस प्रजाती विशेष अध्ययन, अनुसन्धान हुन नसकेको देखिन्छ ।







आगन्तुकहरुले उक्त संकटापन्न प्रजाती लगायत पवित्र तिम्बुङ पोखरी वरिपरि पाइने अन्य बहुमुल्य पर्ने जडीबुटी जथाभावी तरिकाले उखेलेर जरैसंग लैजाने परम्परा प्रसस्तै पाइयो । मन पर्ने जति लैजाने र अन्यलाई ढुंगा माथि फ्याली दिने गर्नाले संकटापन्न प्रजातीहरु छिट्टै लोप भएर जाने खतरा देखिन्छ । पवित्र उच्च हिमालयन सिमसार तिम्बुङ पोखरीको छेउमा राखिएको सुचना पाटीले पनि जनचेतना बढाउन नसकेको बोध भयो । केन्जो लगायत अन्य जडिबुटीहरु चोरीनिकासी हुने कुरा सहभागीहरुले बताउनु भयो ।

तिम्बुङ पोखरी परिसरमा पाइने थुप्रै वनस्पति प्रजातीहरु उक्त पारीस्थितिकिय प्रणालीको अभिन्न अंग अथवा महत्वपुर्ण सदस्यहरु हुन् । त्यस्ता प्रजातीहरुले









उचित संरक्षणको प्रतिक्षा गरिरहेको देखिन्छ । हुन त जैविक विविधताको हैसियतले नेपाल विश्वको २३ औं र एसियामा ११ औं स्थानमा पदर्छ । त्यसै गरी नेपाल विश्वको जैविक विविधताले महत्वपूर्ण (Biological hot spot) र संकटापन्न पारीस्थितिकीय प्रणाली (Critical Ecosystem) भित्र पर्ने हिमाली देश पनि हो । महत्वपुर्ण र असहज परिस्थिती भएमा प्रजातीहरुको बासस्थान, संख्या, सन्तान बृद्धि र मौसम परिवर्तनका परेका असर बारे बैज्ञानिक अनुसन्धान गर्नुपर्ने आवश्यकता देखिन्छ । त्यसै अनुरुप संरक्षण कार्य प्रभावकारीताका साथ अगाडी बढाउनु पर्ने देखिन्छ ।

संकटापन्न हिमाली परिस्थितिकिय प्रणाली भित्र रहेका तिम्बुङ पोखरी परिसरमा विश्वबाटै लोप हुन लागेको वन्यजन्तुहरु जस्तैः- हिउँ चितुवा पाइन्छ भनी सहभागीहरुले बताउनु भयो । त्यसै गरी एक्लो प्रजाती र उपजाती भएको वन्यजन्तु जो आफ्नो दिनचर्या एक विशेष प्रकारको निगालो घारी र घना प्राकृतिक जंगलमा बस्न मन पराउने हाव्रे (पुङगुसे) त्यही पारीस्थिकिय प्रणालीमा पान्इछ भनी छलफल कार्यमा सहभागीहरुले प्रष्ट पार्नु भयो । पहिला-पहिला उक्त जन्तुको छाला (सर्वङ्ग) १-२ मन (८0 कि.लो) नुनसंग सट्टपट्ट हुने गर्थे रे । छलफल कार्यमा सहभागीहरुले बताउनु भए अनुसार उक्त क्षेत्रमा पाइने अन्य वन्यजन्तुहरुमा झारल, घोरल, कस्तुरी, मृग, भालु, थार, हिमाली भेडा, चितुवा, ध्वासे चितुवा (निंगाले), ब्वासो, वन विरालो, डाँफे, मुनाल, चिलिमे, लेखा र काडेभ्याकुर जस्ता पंक्षीहरु पाइन्छ भन्ने कुरा उहाँहरुले बताउनु भयो ।

साइटिस अनुसुची एकमा समावेश भएका ध्वाँसे चितुवा (निंगाले), हुचिल, सरीसृप, उभयचर र अन्य जलचर लगायत त्यस्ता संकटापन्न सुचीमा परेका प्रजातीहरुको अनुसन्धान गर्नुपर्ने अत्यन्त आवश्यक देखिन्छ । प्रत्यक्षदर्शीका अनुसार हिमालयन भेडाहरुको अस्थीपन्जर (हाड) तिम्बुङ पोखरीको परिसरमा देखेको र त्यसको शिकार हिउँचितुवाले नै गरेको हुन सक्ने तर्क उहाँको थियो । त्यस क्षेत्रमा कस्तुरी लगायत अन्य वन्यजन्तुहरुको मानवीय शिकार पनि हुने गरेको छ भनी अर्का सहभागीले बताउनु भयो ।

प्रायजसो वर्षभरी नै बादल लागी रहने पर्यावरण भएको तिम्बुङ पोखरी पारीस्थिकिय प्रणालीमा पाइने प्राकृतिक पर्वतीय वन (चित्र) विनाश हुदै गएको अवस्था स्थलगत अध्ययन गर्ने क्रममा पाइयो । संकटापन्न हिमाली पारीस्थिकिय प्रणालीमा भएका वन यसरी विनाश हुँदै गएमा गुँरास प्रजातीहरुसंगै आश्रित भएका प्रजातीहरु लोप हुने खतरा पनि उत्तिकै देखिन्छ । केहि शिला प्रजाती (Stonespecies) को रुपमा देखिन्छ ।



पर्वतीय प्राकृतिक वन पारीस्थिकिय प्रणालीमा पाइने सुन्दर फुल जडीबुटी




नेपालका संरक्षित वनस्पति प्रजाती मनै लोभ्याउने कटुसे च्याउ र अन्य पत्रेच्याउ सिमसार क्षेत्र वरिपरि पाइने गैरकाष्ट वस्तुहरु हुन् । साइटिस अनुसुची २ मा समावेश, विश्व संरक्षण संघको रेड डाटा बुकमा जनाए अनुसार संकटापन्न अवस्थामा रहेका वन तरुल पनि सीमसार क्षेत्रमा पाइने प्रजाती हो । प्रकृतिमा मौसम अनुसार फुली रहेका अति मनमोहक फुल प्रजातीहरु माहुरी, भमरा आदिको निमित्त महत्वपूर्ण हुन्छ ।

चन्द्रमा झै शीतल, अटल स्वभाव, हाँसी रहने कन्चनजंङ्घा हिमाल आफ्नो शीरमा राखी गजडम्म परी बसेको ताप्लेजुङ्ग काली खोला तिम्बुङ पोखरी परिसरमा कल-कल भै झर्ने स्वच्छ पानीको स्रोत हुन् ।










त्यस्ता प्रकृतिका सीमसार पारीस्थितिकिय प्रणाली पाहा प्रजातीका उभयचर, स्वच्छ पानीमा हुने माछा प्रजातीहरुको वासस्थान भएको कुरा सहभागीहरु बताउँछन् । त्यस्ता झरनाहरुको धार्मिक सांस्कृतिक, परम्परा विश्वास र जैविक विविधता बारे अध्ययन अनुसन्धान गर्न भने बाँकी नै छ । यस प्रकारको सीमसार पारिस्थिकिय प्रणालीमा आस्रीत भएर रहेका प्रजातीहरुको अध्ययन गर्नु आवश्यक देखिन्छ ।

पवित्र तिम्बुङ पोखरीबाट उत्पत्ति भई वगेको काली खोलामा विभिन्न साना-ठूला खोला खोल्सीहरु आई मिसीन्छन् । त्यसरी निर्मल पानी पर्वतीय सीमसार क्षेत्रमा पाइने माछा प्रजातीहरु समुदायहरुको लागि प्रमुख प्रोटिन स्रोत रहेछ । गाउँघरका साना साना भाई, युवाहरुको लागि उक्त सीमसार क्षेत्रमा गई माछा मार्ने गर्दा मनोरञ्जन हुने सके केहि माछा पनि घरमा लिएर आउन पाइने । बाँसको घेरामा जाल बनाएर माछा पक्रने चलनले पारिस्थिकीय प्रणालीलाई नकरात्मक असर पार्न नसक्ने कुरा समाजका बुद्धिजीवी सहभागीले बताउनु भयो । बरु उक्त परम्पराले गर्दा युवक तथा मानिसहरु प्रकृतिसंग नजिक हुँने हुँदा एक आपसको परस्पर सम्बन्ध कायम हुन्छ भनी उहाँले छलफल कार्यमा बताउनु भयो । उक्त सानो भाईले काली खोलाको किनारमा गई चार प्रजातीका माछाहरु पक्री ल्याएको पाइयो । गाउँका बुढा-पाकाहरुको अनुसार त्यस्ता माछाहरु पहिला पहिला त धेरै पाइन्थ्यो रे । आजभोली त कम हुदै गएको भन्ने कुरा बताउनु भयो । बुढापाकाहरुका अनुसार उनीहरु खोलामा माछा मार्न वा जाल खेल्न जादा पानीमा पस्नु अघि पानी देउ र खोलाको पुजा गर्नु पर्छ रे नत्र आफु वा घर परिवारका सदस्यहरु विराम हुने हुन्छ रे ।















## संरक्षण :-

सत्य चिताएर सधैं तिम्बुङ पोखरीको ध्यान गर्ने धार्मिक परम्परा, अन्तरआत्मा देखि चिताएर कान्छी धारामा नुहाई-धुहाई गरी सफा मन लिएर तिम्बुङ पोखरीको पूजा गरे ईच्छाएको कुरा पुरा हुने रहेछ। दु:ख, पीर, कष्ट, रोग, भोग, अभाव, अनिकाल जस्ता मानवीय तथा वातावरणीय पर्दा वा नपरोस भनी तिम्बुङ पोखरीको आराधना गर्ने धार्मिक समाज र उनीहरुको परम्पराले संरक्षणमा योगदान पुऱ्याएको देखिन्छ। भेडी वा पशु गोठ आइपुगेपछि तिम्बुङ पोखरीमा गई आफ्नो मुन्धुम वा बोलीले सम्बोधन गरी रक्षाको निमित्त प्रार्थना गर्ने परम्परा रहेछ। कुनै पनि जडीबुटी लैजान आवश्यक परेमा पोखरीसंग मागी लैजानु पर्ने धार्मिक मान्यता तथा सांस्कृतिक चलन जैविक विविधता संरक्षण र बुद्धिमता पूर्वक उपयोगसंग सम्बन्ध भएको परम्परा पाइन्छ। धार्मिक तथा सांस्कृतिक विश्वासले लेखिएको शिलालेख ले पवित्र तिम्बुङ पोखरी परिसरमा भएको जैविक विविधताको संरक्षण गर्नु भन्ने शिक्षा दिएको पाइन्छ। उक्त दर्शनलाई आधुनिक प्रकृतिका सीमसार क्षेत्रको संरक्षण र बुद्धिमता पूर्वक उपयोग शिक्षा प्रणालीमा समावेश गर्नु पर्ने दायित्व देखिन्छ। त्यसो त तिम्बुङ पोखरी बारे वर्णन गरिएको नेपाली अन्तरराष्ट्रिय लिपी "श्रीजंगा" मा लेखिएको शिला तिम्बुङ पोखरीमा थियो रे। त्यो शिलालेख त्यहाँबाट हरायो भन्ने कुरा प्रत्यक्ष सुन्नमा आएको छ। त्यस्ता ऐतिहासिक तथ्यहरुको खोजी र संरक्षण गर्नु आजको आवश्यकता भएको छ।



वारीपारी सुन्दर गाउँ-घर प्राकृतिक स्रोतका धनी परम्परागत जीवन शैली, कृषि, पशुपालनमा रमाएका पाँचथर र ताप्लेजुङ्ग बासीहरु धर्मिक तथा सांस्कृतिक महत्वको हिमाली सीमसार तिम्बुङ पोखरी पुख्याउली ऐतिहासीक स्थल मान्नु हुदोरहेछ। भिर-पाखामा परम्परागत कृषि प्रणाली, छरिएर बनाइएको घर (चित्र) हरु हेर्दा एक लहर देखिने प्रकृतिसंग अत्यन्तै नजीक मित्रवत भई बसेको सरल जीवन शैली पाइन्छ। सधैं तिम्बुङ पोखरीको पुकार गर्ने धार्मिक र सांस्कृतिक परम्परा भएका समाज नराम्रो चिताउन हुन्न, असत्य बोल्नु हुन्न, पाप र कु-कर्म गर्नु हुन्न। यसो गर्ने गरे तिम्बुङ पोखरीले सराप दिनु हुन्छ। पुर्ख्यौली मौलिक विश्वास र परम्पराले प्रकृतिसंग असल व्यवहार गर्नु पर्छ भन्ने शिक्षा समाजका सबैलाई दिएको पाइन्छ।



पुर्ख्यौंउली विधि अनुसार तिम्बुङ पोखरीसंग मागी ल्याएको श्रीमती र सुन्दर प्रकृतिको साथमा हुर्किरहेको सन्तान सुशिल स्वभाव तर अटल विचार र दुरदर्शी दृष्टि आजको बालक भोलीको कर्णधार तिम्बुङ पोखरीको आशिर्वादले प्रकृति संरक्षणमा योगदान पुर्‍याउने छन्। प्रत्येक साउन पूर्णिमाको समय निखुर गाई (स्थानीय वा नस्लनसुधारीको) को दुध, त्यसैगरी पुर्खाकै पालादेखि खेती गर्दै आएको अन्न वालीको नयाँ (नखाईकन) फल आदि लिएर तिम्बुङ पोखरीमा पहिला चढाउनु पर्ने धार्मिक परम्परा र मान्यताले कृषि जैविक विविधता संरक्षण गरिरहेको देखिन्छ।

मनमा लोभ, लालच र विनाश वा विध्वांश मनसायले कार्य गरे तिम्बुङ पोखरी माईले सराप दिनुहुन्छ र उसको सर्वनाश हुन्छ भन्ने विश्वासलाई हिमाली सीमसार, जैविक विविधता संरक्षण शिक्षामा समावेश गर्नु पर्ने देखिन्छ।

पुर्खाहरुले छाडेर गएका त्यस्ता सभ्यताहरुलाई प्रकृति संरक्षण रणनितीमा समावेश गरी नव पिडीहरुलाई शिक्षा पुर्‍याउनु पर्ने आवश्यकता देखिन्छ। धार्मिक सांस्कृतिक भौगोलिक तथा जैविक विविधता लागि महत्वपुर्ण क्षेत्रको रुपमा रहेको तिम्बुङ पोखरीलाई रामसार सुचीमा समावेश गर्न नितान्त आवश्यक देखिन्छ।



WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:
Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations



**वन विभाग**

बबरमहल, काठमाडौं, नेपाल

फोनः ९७७-१-४२२०३०३, ४२२१२३१, ४२१६३७९

फ्याक्सः ९७७-१-४२२८३७७, ४२२७३७४

ई-मेलः dof@col.com.np

वेबसाइटः www.dof.gov.np



**राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग**

पो.ब.नं. ८६०, बबरमहल, काठमाडौं, नेपाल

फोनः ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६

फ्याक्सः ९७७-१-४२२६६७५

ई-मेलः info@dnpwc.gov.np

वेबसाइटः www.dnpwc.gov.np




**डब्लु डब्लु एफ नेपाल**

**स्वच्छ जलसम्पदा कार्यक्रम**

पो.ब.नं. ७६६०, बालुवाटार, काठमाडौं, नेपाल

फोनः ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२

फ्याक्सः ९७७-१-४४३८४५८

ई-मेलः info@wwfnepal.org

वेबसाइटः www.wwfnepal.org

www.panda.org/freshwater